(वीर सहिदहरूको संस्मरणमा कीर्तिपुर, काठमाडौंबाट प्रकाशित)



# सहिद

SAHID WEEKLY साप्ताहिक

वर्ष ९, अंक ४२, (पूर्णाङ्क ३६६) पृष्ठ -६ ने.सं. ११३३ पोहेला गा:, पञ्चमी, वि.सं. २०६९ माघ १९ गते शुक्रबार Feb. 2013 मूल्य रू. ५



## कीतिपुर नगरपालिका कहाँ राख्ने ?

कीर्तिपुर नगरपालिकाको कार्यालय सबै कीर्तिपुरवासीको सुविधा र सरल ठाउँमा राख्नुपर्ने विषयमा छलफल सुरु भएको छ । माघ १६ गते दोस्रो पटक नगाउँस्थित ए वान पार्टी प्यालेसमा भएको भेलाले आवश्यक कार्य अगाडि बढाउन ११ सदस्यीय कार्य संयोजन

क्रमशः अन्तिम पृष्ठमा

## हात्तीपाइले रोग विरुद्ध अभियान भोलिबाट

जिल्ला जनस्वास्थ्य कार्यालय टेकु काठमाडौंको आयोजनामा हात्तीपाइले रोग निवारण अभियान २०६९ सफलतापूर्वक संचालन गर्न बुधबार जनस्वास्थ्य सभा भवनमा पत्रकार सम्मेलन गरी जानकारी दिनुभयो । क्रमशः अन्तिम पृष्ठमा

## सूचना तथा सञ्चार प्रविधि प्रदर्शनी

काठमाडौं, । सूचना तथा सञ्चार प्रविधिको क्षेत्रमा भएका नवीनतम विकास तथा मुलुकको आर्थिक विकासका निम्ति यसको प्रवर्द्धन गर्ने उद्देश्यले माघ २४ देखि २९ गतेसम्म १९ औं सूचना तथा सञ्चार प्रविधि प्रदर्शनी हुने भएको छ ।

विज्ञान, प्रविधि तथा वातावरण, सूचना तथा सञ्चार मन्त्रालय, राष्ट्रिय सूचना प्रविधि केन्द्र, नेपाल दूरसञ्चार प्राधिकरणलगायत संस्थासँगको सहकार्यमा कम्प्युटर एसोसिएसन अफ नेपाल (क्यान) ले स्थानीय भृकुटीमण्डपमा उक्त प्रदर्शनी आयोजना गर्न लागेका हुन् ।

क्रमशः अन्तिम पृष्ठमा

## मधुमेह तथा वाथ रोग सम्बन्धि निःशुल्क स्वास्थ्य शिविर

कीर्तिपुर । यहि माघ २७ गते शनिवारका दिन जिवन्त स्वास्थ्य सेवा सदन प्रा लि कुलेश्वरका विशेषज्ञ डाक्टरहरुद्वारा कीर्तिपुरमा निःशुल्क स्वास्थ्य सिविर संचालन हुन गइरहेको जानकारी गराइन्छ । उक्त शिविर माघ २६ गते घरेलु भवन खासिबजारमा विहान ७:३० बजे विहन खाली पेटमा भने माघ २७ गते विश्व राष्ट्रिय मावि ढल्पामा विहान ९:०० बजे खाना खाएर गर्ने आयोजकले जनाएको छ । नाम दर्ताको लागि माघ २५ गते नै आयोजक भ्री पासा पुचः बचत तथा ऋण सहकारी संस्था लि. र बुद्ध निर्माण समिति कीर्तिपुर -५ मा सर्म्पक गर्न सकिने जनाएको छ । सम्पर्क नं ४३३१६२२, ९८४१३४४४७४

# सत्ता स्वार्थको कारण देशको अवस्था जर्जर

का. रोहित




कीर्तिपुर । नेपाल मजदुर किसान पार्टीको ३९ औं स्थापना दिवसको अवसरमा नेमकिपा कीर्तिपुरले शनिवार प्रचवन कार्यक्रम गऱ्यो ।

"नेपालको कम्युनिष्ट आन्दोलनमा नमकिपाको भूमिका" विषयक प्रवचन कार्यक्रममा प्रमुख अतिथि पार्टी अध्यक्ष नारायणमान विजुक्छें (रोहत) ले अहिले आफुलाई कम्युनिष्ट दावी गर्ने नेकपा एमाओवादी नेतृत्वका सरकारको अकर्मण्यता र मनपरीले देश बन्द गल्लीभित्र फसेको बताउनुभयो ।

उहाँले देशको अवस्था दिनप्रतिदिन जर्जर भइसक्दा पनि सत्तास्वार्थमा लागेका एमाओवादी तथा अन्य दलले राष्ट्रपतीय बन्दोबस्तका लागि अह्वान नगर्नु दुःखद् रहेका बताउँदै वर्तमान सरकार र दलहरुले नै राजनीतक संक्रमण छोट्याउन राष्टपतिलाई अनुरोध गर्नुपर्नेमा जोड दिनुभयो ।

उहाँले नेपालीहरुको हितको पक्षमा नेमकिपाले स्थापना कालदेखि नै आवाज बुलन्द गरिरहेको चर्चा गर्दै ठूला दलले लगानी बोर्ड विधेयक र विश्व व्यापार संगठनको सदस्य बनेर देशलाई उपनिवेश र युद्ध मैदान बनाउन लागिरहेको बताउनुभयो। अध्यक्ष बिजुक्छेंले देशको ठूला दलहरुको चरित्रहीन र सिद्धान्तहीन प्रवृतिले नेपालीको कम्युनष्टि आन्दोलन विश्रृङखलित बनिरहेको उल्लेख गर्नुभयो ।



कार्यक्रममा नेपाल क्रान्तिकारी शिक्षक संघका उपाध्यक्ष पूर्णप्रसाद धितालले नेमकिपा निष्ठाको राजनीति गर्ने पार्टी रहेको बताउँदै वर्तमान एमाओवादी सरकारको कारण देशमा विकृति र विसंगति बढ्दै गइरहेको बताउँनुभयो ।

नेमकिपा काठमाडौंका राजबीर डंगोलले नेमकिपा नेपालको कम्युनष्टि आन्दोनलको प्रकाश स्तम्भ भएको बताउँदै नेमकिपा वर्ग संघर्षमा जोड दिदैं अघि बढिरहेको बताउनुभयो ।

नेमकिपा कीर्तिपुरका अध्यक्ष हरिकुमार महर्जनको सभापतिवमा भएको प्रवचनमा सचिव देवशरण महर्जन र नारायण महर्जनले लगायतले बोल्नुभएको थियो ।

# पर्यटन विकास समाजको प्रथम वार्षिक सभा सम्पन्न

कीर्तिपुर क्षेत्र पर्यटन विकास समाजको प्रथम वार्षिक साधारण सभा शनिवार कीर्तिपुर हिलसाइड होटल एण्ड रिर्सोटको सभाहलमा सम्पन्न भयो । पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका सचिव सुशिल घिमिरेको प्रमुख आतिथ्यमा पानसमा दीप प्रज्वलन गरी उद्घाटन गरेको सो सभामा वहाँले कीर्तिपुरमा पर्यटन विकासलाई व्यवस्थित रुपले संचालन गर्नुपर्ने बताउनुभयो । पर्यटन विकास समाजले कीर्तिपुरमा विभिन्न क्रियाकलाप गरेपनि पर्यटकहरु आकर्षित बन्न नसकिरहेको कारण यहाँ पर्यटकीय पुर्वाधार तयार भैनसकेकोले हो वहाँले भन्नुभयो ।




कार्यक्रममा नेपाल पर्यटन वोर्डका अधिकृत सुधन सुवेदीले कीर्तिपुर धार्मिक, ऐतिहासिक, सामाजिक र वातावरणीय र शैक्षिक पर्यटनको विकास सम्भावना छ र पर्यटकीय गन्तव्यको रुपमा विकास गर्न सकिन्छ भन्नुभयो ।

कार्यक्रममा समाजका अध्यक्ष विजय कुमार महर्जनले संस्थाको बार्षिक प्रगति विवरण प्रस्तुत गर्नुभएको थियो । प्रतिवेदनमा पर्यटन विकास समाज गठनको उद्देश्य, प्रष्ट पार्नुभएको थियो साथै समाजको अगुवाइमा चम्पादेवी हाइकिङ ((बैशाख १), सगरमाथा आरोही सम्मन (२०६८ जेठ २० गते), पत्रकार आमन्त्रण (भाद्र १, ०६८), २०६८ कार्तिक २६ गते लायन्स मिनि मेलामा सहभागी र फोटो प्रदर्शनी, पर्यटन राज्यमन्त्रीको अभिनन्द (मंसिर २), सात दिने होमस्ते तालिम संचालन (मंसिर ९), चम्पादेवी

क्रमशः अन्तिम पृष्ठमा

**ऐतिहासिक जनआन्दोलन २०४६ चैत २० गते शहादत अमर सहिद**


लनबहादुर महर्जन वि.सं. २००६ माघ


हिराकाजी महर्जन वि.सं. २०१७ माघ


राजमान माली वि.सं. २०२५ मंसिर


राजेन्द्र महर्जन वि.सं. २०३० चैत


# सहिद साप्ताहिक

वर्ष ९ अंक ४२, २०६९ माघ १९ गते शुक्रबार

शंखापुर प्रकाशन समूहको लागि

सम्पादक/प्रकाशकः नारायण महर्जन

विज्ञापन/वितरकः नेल्सन

व्यवस्थापकः प्रताप, वीरुण

कम्प्युटर टाइप/सेटिङः श्याम महर्जन

सम्पर्क कार्यालयः जहुँ हिटी युवा क्लब - ११ पाँगा, कीर्तिपुर, फोन नं. ४३३०५८३

E-mail:- kipushahid@hotmail.com

www.kipushahid.blogspot.com

www.ourkirtipur.com.np

मुद्रण : शर्मिला प्रिन्टर्स, डल्लु, काठमाडौं


## सम्पादकीय .....

### देशको अवस्थाः सत्तारुढः आफै बोक्सी आफै धामी विपक्षीको आन्दोलन सत्तामोह केन्द्रित राष्ट्रिपति खोपीको देउता सावित

मुलुकको अवस्था अन्योल माथि अन्योल सृजना भइरहेको छ । सत्तारुढ, विपक्षी दल र राष्ट्रपति देशको अवस्था बुझ्रेर समाधान गर्न चाहेका छैनन्। हरेक समस्याको समाधान कित सहमतिले हुन्छ कि त आन्दोलनको आँधिबेरीले हुन्छ, कि त कानुनी बाधा अडकाउ फुकाउ गरी हुन्छ। राजनीतिक संघर्ष सिधा हुँदैन, परिस्थितिले सृजना गरे अनुरुप अगाडि बढ्न सक्नुपर्दछ । सत्तारुढ दलले देशलाई असफलतातिर लगेको भएमा, सुशासन दिन नसकेमा, राजनैतिक निकास दिन नसकेमा राजनैतिक नैतिकताको आधारमा सत्तामा टाँसिरहने सुहाउँदैन । प्रजातान्त्रिक र पूँजीवादीले अरुको स्वार्थ नहेरी आफ्नै स्वार्थ मात्र हेर्ने गरिन्छ तर कम्युनिष्ट पार्टीका नेताहरु पनि पूँजीवादी स्वार्थमा फसेपछि अन्ततः आफै बोक्सी आफै धामी भयो। १७ गते सत्ता गठबन्धनले वृहत जनजागरण सभा विपक्षीको विरुद्ध केन्द्रित भयो। जवाफी सभा भयो। जेठ १५ गते संविधानसभाको चुनाव विपक्षीलाई नत्थी लगाएर पनि हुन्छ नत्र कांग्रेस एमाले पत्तासाफ। (नागरिक दैनिक १८ माघ)

विपक्षीको आन्दोलन सत्ता केन्द्रितमा मात्र सिमित भयो। माघ ६ गते दैलेखबाट आरम्भ गरेको आदोलनले दैलेखमा जस्तो आन्दोलनमय बनाउन सकेको छैन। शक्ति प्रदर्शन आन्दोलन होइन, माघ २६ हुने शक्ति प्रर्दशनीले सरकारको साखे झार्नै छैन, एमाओवादीका नेता विरुद्ध आन्दोलनले सफलता मिल्नेछैन। झलनाथ, सुशील कोइराला जस्ता विपक्षी नेताले आन्देलनमय भयो भने हाँसी हाँसी गरेको आन्दोलन फुस्रो सावित भैरहेका छ।

जनसमर्थन विना आन्दोलन सफल हुनेछैन । जनसमर्थनको लागि जनताको विश्वास जित्न सक्नुपर्दछ। त्यसको लागि जनताका समस्यालाई लिएर आन्दोलन अगाडि बढाउनु पर्दछ।

राष्ट्रपति खोपीको देउता सावित भैरहेको छ । असहमतिको राजनीतिले थकित छन् । पटकपटकको प्रयास असफल भएपछि राजनीतिक दलहरु अदुरदर्शी र देश र जनताप्रति जिम्मेवारी नभएपछि, खोपी बन्ने सोच त्याग्नुपर्दछ।

राष्ट्रपतिद्वारा नेमकिपाले सुझाएको अनुसार स्वतन्त्र र तटस्थ व्यक्तिको चुनावी सरकार गठन गरी संसदीय निर्वाचन गरी देशको विकास दिनु हतार भैसकेको छ।

# आन्दोलन : कसको विरुद्ध, किन ?

– लक्ष्मण श्रेष्ठ

राष्ट्रपतिले सहमतिको निम्ति म्यादविहीन खुला आह्वान गरेपछि सहमतिका सबै फोस्रा आशाह तुहिएका छन्। हिजोसम्म आँप रेपछि खाउँला भनेँ गरी बाबुरामले सरकार छोड्लान र कुर्सी ओगटुँला भनेर बसेका प्रतिपक्षी दलह अन्ततः आन्दोलनको मैदानमा उत्रिएका छन्। आवश्यकताबोधले होइन, मात्र बाध्यताले । प्रतिपक्षी दलहले आन्दोलनको घोषणा गरेपछि नेपाली राजनीतिका पर्यवेक्षकहले निकै चासोपूर्वक नियालिरहेका छन्। के साँच्चै आन्दोलनलाई निर्णायक विन्दुमा पुयाउन सक्लान् त प्रतिपक्षी दलहरु प्रश्न खडा भएको छ। सुरुमै छलफल गरौं।

**प्रश्न र सन्देहले घेरिएका दलहरू**

आन्दोलनको घोषणा गरेका दलहरुले अवश्य नै निकै प्रश्न र चुनौतीहको सामना गर्नुपर्ने छ । विगतका तिनका क्रियाकलापहले ती त्यति भरपर्दा र आशालाग्दा नभएको पुष्टि गरिसकेको छ। पुनःस्थापित संसदबाट नागरिकता विधेयक, संविधान सभाबाट लगानी बोर्ड विधेयकजस्ता देशकै सार्वभौमिकतामा आँच आउने विधेयकहरु पास गरेको विषयमा त जनताले आ आफ्नै चेतनास्तरअनुसार प्रतिक्रिया देलान्। तर समयमै संविधान बनाउन पहल नगरेको, राजनीतिलाई पद र पैसाको पर्यायवाची बनाएको, संविधान सभालाई प्रभावकारी बनाउन नसकेको, स्थानीय निकायको निर्वाचन नगरेको आदि आदिको जवाफ भने दह्रैसँग पाउनेछन् आन्दोलनको घोषणा गरेका दलहरुले । आज जनतामा राजनीतिप्रति तिब्र वितृष्णा छ। यसको कारण जति अहिलेको सत्ता पक्ष हो, त्यति नै शासक प्रतिपक्षी पनि हुन् । बहुदल कालमा यिनिहरुको चर्तिकला हेर्दाहेर्दा वाक्क दिक्क जनताले प्रतिगमनविरोधी आन्दोलनको समयमा यी दलहलाई माफ गरिदिएका थिए, सुध्रिने शर्तमा। तर के यिनिहरु सुध्रिए त ?

अहँ यिनीहरु सुध्रिएनन्। बाह्र वर्ष कुकुरको पुच्छर ढुंग्रामा राखेपनि जस्ताको तस्तै भन्ने नेपाली उखान छ । तर यी दलहरु त यस्ता जिराहा भएर निस्के पुच्छर त बाँगै रह्यो, रह्योढुंग्रो पनि उल्टो बाँगियो । आज फेरी यी दलहरु आन्दोलनको मोहडामा आउन बाध्य भएका छन्। पाँच वर्षमा एकपटक चुनावको नाम पारेर जनतामा आउने यी दलहलाई आज परिस्थितिले फेरी आन्दोलनको आह्वान लिएर आउन बाध्य बनाएको छ। आन्दोलनको रमञ्चमा यिनीहरुको अनुहार हेर्न त धेरै बाँकी नै छ। एकदुईवटा चर्का भाषण र विरोधका स्वरहरु त राजनीतिमा केटाकेटीले गाउने ताराबाजीको गीत जस्तै हो ।

**किन र कसको विरुद्ध आन्दोलन ?**

आन्दोलनको मोहडामा उत्रिएका दलहरु जबसम्म आन्दोलनप्रति प्रतिबद्ध हुनेछैनन् तबसम्म जनताको विश्वास पनि पाउनेछैनन् । आफैमा स्वतन्त्र पनि हुनेछैनन् । आज देश नवउपनिवेशीकरणको संघारमा छ । अझ प्रस्टसँग भन्दा नवउपनिवेश बनिसकेको छ । हिजो बेलायतसँग सुगौली सन्धिमा सम्झौता गरेको इतिहास आज भारतको नयाँ उपनिवेश बन्न पुगेको छ। यो त्यसै भएको होइन । कुनै कुरा पनि एकाएक र आकस्मिक हुँदैन । यसको पछाडि पनि लामो इतिहास छ । नेपाली राजनीतिमा भारतीको हस्तक्षेपकारी प्रवेश अहिले होइन सात सालदेखि नै भएको हो ।

भारतीय साथ र सहयोगमा नेपालमा राणाहरुविरुद्ध आन्दोलन गरेको नेपाली कांग्रेस अवश्य नै त्यतिबेला उदाउँदो भारतीय पूँजीको घोडा थियो। त्यसैले सात सालको दिल्ली सम्झौता पनि इतिहासका झुटा किताबहरुमा उल्लेख गरेजस्तो राजा, राणा र कांग्रेसको बीचमा होइन भारत र राणा, भारत र कांग्रेस, भारत र राजाबीच भएको सम्झौता हो । कसैलाई सन्देहरु छ भने धेरै खोज्नुपर्दैन वीपी कोइरालाका आत्मसंस्मरणहरु हेरे पुग्छ । सायद कोशी सम्झौता गरेर, गण्डक सम्झौता गरेर कांग्रेसले भारतलाई गुन तिरेको थियो । कोशी सम्झौता गर्ने मातृका कोइराला थिए, गण्डक सम्झौता गर्ने विपी कोइराला थिए । बहुदलकालमा तिनै कोइराला परिवारका 'हवल्दार' गिरिजाप्रसाद कोइरालाले भारतले ४६ सालको आन्दोलनताका रातारात बनाएको टनकपुर बाँधलाई सम्झौताको रुप दिई महाकाली सन्धिको थालनी गरेका थिए । उनले सुरु गरेको महाकाली सन्धिको खाका कोर्ने काम एमालेको नौ महिने शासनको समयमा भएको थियो । पछि देउवा सरकारको समयमा संसदबाट दुईतिहाइ बहुमतले महाकाली सन्धि पारित गराउन एमालेले खेलेको भूमिका कसरी बिर्सन सकिन्छ र ? महाकाली सन्धि भएमा नेपालमा पश्चिमबाट घाम उदाउनेछ भनेर भाषण गर्ने एमालेका नेताहरु अझै जिउँदै छन् । नेपाली जनताले त्यो भाषण र ती झुटा आश्वासन अझै बिर्सेका छैनन् । आन्दोलनको मोहडामा ती दलहरुले यसको जवाफ दिनैपर्नेछ ।

यी असमान सन्धि, सम्झौताले यी शासक दलहरुको अनुहार कालो भएको छ । के तिनीहरु प्रायश्चितको पानीले त्यसलाई पखाल्न सक्लान ? विश्वास गर्न त्यति नै गाहो छ जति गाहो छ नाइल नदी एसियामा छ भन्नुमा ।

हो, आज देश भारतको नवउपनिवेश भएको छ। वर्तमान सरकार पनि भारतकै आड, भरोसा र शक्तिको भरमा टिकिरहेको छ । भारतलाई नेपाली राजनीतिमा प्रवेश गराउनुमा कांग्रेस र एमाले त्यति नै जिम्मेवार छन् जति अहिले लेन्डुप दोर्जेको नयाँ संस्करण बनेका प्रचण्ड र बाबुराम अर्थात् सिङ्गो एमाओवादी पार्टी छ । त्यसैले प्रश्न गरिएको हो आन्दोलन केका निम्ति ? कसको विरुद्ध ?

यदि आन्दोलन नेपाल र नेपाली जनताको निम्ति हो भने आन्दोलन नेपाली जनताको शत्रु भारतीय हस्तक्षेप र त्यसका दलालहरुको विरुद्ध हुनैपर्छ । त्यसका निम्ति नेपाली कांग्रेस र एमाले लगायतका दलहरुले आत्मालोचना गर्नैपर्छ । हिजो भारतलाई हावी गराउनु हाम्रो ठूलो अपराध हो भनेर स्वीकार्नुपर्छ। नेपाली जनताको शक्तिमा विश्वास गर्नैपर्छ । होइन यदि एकातिर फर्केर ठूलोठूलो स्वरले भाषण गर्ने अनि अर्कोतिर कतिबेला दिल्लीको इशारा आउँछ र आन्दोलनसान्दोलन स्थगित गरेर प्रधानमन्त्रीको भाग खान दौडौंला भनेर आन्दोलन गर्ने हो भने त्यस्तो आन्दोलनको कुनै खाँचो छैन ।

तर के यसो गर्न सक्लान् त आन्दोलन गर्छु भन्ने दलहरु ? त्यो एक असम्भव कल्पना हो । यदि गरिहाले भने त्यो आठौं आश्चर्य हुनेछ ।

**एमाओवादी दलाल होइन कसरी होइन ?**

एमाओवादी सरकारमा आएपछि भारतको पक्षमा के कति काम भयो, हजार जीब्रा भएका भनिएका शेष नागले मात्रै वर्णन गर्न सक्लान् । माथिल्लो कर्णाली सम्झौता, विप्पा सम्झौता, विमानस्थल सम्झौता, लगानी बोर्ड विधेयक आदि आदि । यी त केही थोरै बुँदाहरु हुन्, हामीजस्ता साधारण मानिसले मात्र स्मरणमा राख्नसक्ने। तर यति चाहिं सत्य साँचो हो, देशघातको म्याराथुन दौडमा एमाओवादी साँच्ची नै एक नम्बरको पार्टी भएर निस्केको छ । माओवादीले गरेको देशघातको पृष्ठभूमिमा नेपाली कांग्रेस र एमालेको र फीका हुन्छ । बुटवलका कवि अजम्बरध्वज खाती भन्छन्, सिक्किम त एउटा लेन्डुप दोर्जेले खत्तम पारेको थियो । तर यहाँ त मैले अनेक लेन्डुपहरु देख्छु ।

साँच्चै हो, आज देश लेन्डुपहरुले भरिभराउ भएको छ । जसको नाइके एमाओवादी बन्न पुगेको छ । दस दस वर्षसम्मको द्वन्द्व दलालीमा रुपान्तरित भएको छ। हजारौंको बलिदानीले दिल्लीको सेवा गरेको छ । भाग्य फेर्न ज्यानको बाजी थापेका पवन कुँवरहरुले त आज झापडमात्र हानेका छन् । भोलि तिनले बम र बारुदको बाटो समाएभने के हुने हो ? प्रचण्ड र बाबुरामले नै जवाफ देऊन् ।

बाबुराम भट्टराईले बीबीसीसँगको एक अन्तर्वार्तामा आफू भारतको दलाल भए झुण्डिएर मर्न तयार भएको बताएका थिए । आज घटनाक्रमहरुले उनलाई लेन्डुप दोर्जेको नयाँ संस्करण सावित गरिदिएको छ । अब उनलाई त्यो अन्तर्वार्ता सम्झाइदिंदा कसो होला ?

**शुभकामनाका शब्दहरू**

अन्त्यमा फरक प्रसङ्ग । नेपालको कम्युनिष्ट आन्दोलनमा आफ्नो बेग्लै पहिचान कायम गर्न सफल नेपाल मजदुर किसान पार्टी माघ १० गतेबाट ३९ औं वर्षमा प्रवेश गरेको छ । निर्वाचनको लेनिनवादी उपयोग, सोभियत संशोधनवादको सामाजिक साम्राज्यवादमा पतन, बंगलादेश निर्माणमा भारतको भूमिकाको विरोधजस्ता राष्ट्रिय अन्तर्राष्ट्रिय घटनाक्रमहरुबारे फरक मत भएकै कारण नेमकिपाको स्थापना भएको थियो, ३९ वर्ष अगाडि ।

३९ वर्षको यो अवधिमा नेमकिपाले उकालो, ओरालो, सजिलो, अप्ठेरो बाटो पार गर्दैआएको छ । तर कतैपनि आफ्नो सिद्धान्तबाट विचलित छैन । नेपालका कम्युनिष्ट आन्दोलनमा देखापरेका खोटा विचारहरुको खण्डन नामक पुस्तकमा अगाडि सारेका सैद्धान्तिक धारणाहरुमा नेमकिपा अझैपनि उत्तिकै प्रतिबद्ध छ । कसले भन्न सक्छ नेमकिपाले कतै बोली फेरेको छ ?

कहिले सत्ताको लोभमा नफस्ने, जनताको मामा रहेर कम्युनिष्ट आन्दोलनलाई अगाडि बढाइरहने, देशविरोधी सन्धि, सम्झौता, विधेयकको जहिल्यै विरोध गर्ने यो पार्टी संविधान सभामा पनि कम्युनिष्ट एजेण्डा साथ नै प्रस्तुत भएको थियो । नागरिकता विधेयकको प्रशङ्गमा होस् वा लगानी बोर्ड विधेयकको प्रसङ्गमा, एक मधेस एक प्रदेशको प्रसङ्गमै किन नहोस् नेमकिपा देशकै पक्षमा उभियो । ठूलो पार्टीको नेता बन्न, चुनावमा मतदाता संख्याभन्दा बढी मत पाउन नेमकिपाका नेताहले कहिल्यै इच्छा देखाएनन् ।

नेमकिपा दृढ संकल्प, पूर्ण प्रतिबद्धता, अडिग देशभक्ति र साँचो वर्गीयताको पर्याय बनेको छ। त्यसैले नेमकिपालाई ३९ औं स्थापना दिवसको अवसरमा शुभकामना ।

सन्दर्भ : नेमकिपा पार्टी स्थापना दिवस (माघ १०)

# नेपालको कम्युनिष्ट आन्दोलनमा नेपाल मजदुर किसान पार्टीको भूमिका

देशको सार्वभौमिकता अखण्डतामाथि भारतद्वारा गरिएको अतिक्रमण, सरकारले माओवादी नियन्त्रणको नाममा गरेको ज्यादती, भ्रष्टाचार, महँगी, आदिको विरोधमा चलाएको नौ राजनीतिक पार्टीहरूको संयुक्त संघर्षमा नेमकिपाले देशका २२ निर्धारित ठाउँमा आफ्नो सहभागिता जनाएको थियो भने थप स्थानहरूमा छुट्टै कार्यक्रम गरेर संघर्षलाई व्यापकता दिएको थियो । संयुक्त संघर्षको परिणामत नौ राजनीतिक पार्टीका प्रतिनिधि र तत्कालीन सरकारबीच एक सम्झौता भएको थियो । यसलाई नेमकिपाले आंशिक उपलब्धिको रूपमा लिएको थियो । तर सरकारले सम्झौताअनुसार कार्य नगरेकोले सात वाम समूहको संयुक्त आन्दोलनमा नेमकिपाले पुनः आन्दोलन गर्‍यो ।

सात वाम समूहको संघर्ष अगाडि बढ्दै गर्दा र सरकारबाट माले हटेपछि अल्पमतको नेकां सरकार धर्मरायो । यसै अवसरमा नौ वामलगायत अन्य पार्टीहरूसँग गरेको सम्झौता र सहमतिलाई विश्वासघात गर्ने नेकाको सरकारविरूद्ध विशेष अधिवेशनको निम्ति समावेदन र अविश्वास प्रस्ताव दर्तामा नेमकिपा र मसालले हस्ताक्षर गरे । यसैबीच सत्तापक्ष एमालेबीचको कथित राष्ट्रिय सरकारको निम्ति अराजनीतिक, असंसदीय, अप्रजातान्त्रिक र असंवैधानिक गठबन्धन भयो । नेमकिपाले एमालेलाई प्रमुख प्रतिपक्षको कर्तव्य निर्वाह गर्न आह्वान गर्दागर्दै भएको नेका र एमालेको गठबन्धनको विरोध गर्‍यो । नेमकिपा निर्वाचन घोषणापत्रमा दिएको वचनअनुसार प्रतिपक्षमा रह्यो । सत्ता पक्ष र प्रतिपक्ष दुवै आ-आफ्नो संसदीय भूमिकाबाट च्यूत भएको ठहर राजनैतिक वृत्तले गर्‍यो । तर नेमकिपा यहाँ पनि इमानदार प्रतिपक्षको भूमिका निर्वाह गर्नमा अथवा कम्युनिष्ट पार्टीको अडानलाई उजिल्याउन सफल रह्यो । सरकारमा गएका पार्टीहरूले २०४६ सालको जनआन्दोलनको मर्म र भावनाअनुरूप काम गरेनन् । जनआन्दोलन दबाउनेमाथि मल्लिक आयोगको प्रतिवेदनअनुसार कारबाही भएन । राजनैतिक र सामाजिक अपराधीहरूले ठूलठूला पूँजीवादी पार्टीहरूमा प्रवेश पाए । त्यसकारण सरकार र प्रशासन झन् झन् अपराधमा मुछिँदैछन् ।

जनतासामु दिएका आश्वासनहरू पूरा गरेनन् । सत्ताको लागि सांसद र मन्त्रीहरूलाई विदेश भगाए, प्राडो र पजेरोमा आफै फसे । भ्रष्टाचार बढ्यो, देश हाहाकारमा डुब्यो र महंगी बढ्यो ।

माओवादीलाई नियन्त्रण गर्ने निहुँमा संकटकालको घोषणा गरियो । प्रतिगमनकारीहरूले टाउको उठाउने मौका पाए । फलस्वरूप २०५९ जेठ ८ गते राती प्रतिनिधिसभाको विघटनसँगै देशमा प्रतिगमन सुरू भयो । २०५९ साउनमा स्थानीय निकायको म्याद नबढाइँदा देश जनप्रतिनिधिविहीन भयो । देशलाई प्रतिगमनबाट जोगाएर प्रजातान्त्रिक प्रक्रियामा फर्काउन नेमकिपाले अर्को निर्वाचन नभएसम्म स्थानीय निकाय र संसदमा जनप्रतिनिधिहरूको पुनर्बहाली हुनुपर्नेमा जोड दियो । संसदको पुनःस्थापना भयो तर शासक पार्टीहरूले स्थानीय निकायको पुनः स्थापना गरेनन् । यसले तराईलाई अशान्त बनाउन आयोगमा घ्यू थप्यो । शासक पार्टीहरूको देश र जनताविरोधी कामदेखि आक्रोशित नेपाली जनता प्रतिगमनविरोधी आन्दोलनमा तदारूकताका साथ सहभागी हुन चार वर्ष लाग्यो । जनताको आन्दोलन उठिसकेपछि 'कूटनैतिक दबाब' मा आन्दोलन बीचमा तुहाउने प्रयास भयो । सरकारमा नगई बाँच्नै नसक्ने दलहरू' प्रतिगमन आधा सच्चियो' र 'पूरा सच्चियो' भन्दै राजाको मनोनीत सरकारमा गए । १८ असोज २०५९ को राजाको कदमको विरोध पनि गर्ने र राजाको मनोनयनको सरकारमा पनि जाने ती दलहरूको दोधारे नीति चमेरो तथा जनतामाफ उदांगियो ।

नेमकिपा चार दलको संयुक्त जनआन्दोलन अगाडि बढाउन सक्रिय भयो । १९ माघ २०६१ मा राजाले देउवा र एमाले सरकारलाई विघटन गरी आफ्नै अध्यक्षतामा मन्त्रिमण्डल गठन गरे । राजाको प्रतिगामी सरकारमा सामेल हुने एमाले र तत्कालीन ने.का. (प्र) ले जनतासामु माफी माग्नुपर्ने अडान राख्दै नेमकिपाले प्रतिगमनविरूद्ध २०६१ चैत्र १८ गतेबाट एक्लै आन्दोलन सुरू गर्‍यो । आन्दोलनको क्रममा नेमकिपाका थुप्रै नेता र कार्यकर्ताहरू घाइते भए, जेल, नेल र हिरासतमा दुःख पाए । जनआन्दोलनको क्रममा सरकारमा गएका दलहरूले आ-आफ्नो गल्ती स्वीकार गरी गल्ती नदोहोऱ्याउने प्रतिबद्धता जाहेर गरे ।

प्रतिगमनको विरोधमा २५ वैशाख २०६२ का दिन सात दलको साझा सहमतिको घोषणा भयो । संयुक्त जनआन्दोलन सुरू भयो । विदेशी शक्तिहरूले जनआन्दोलनको समर्थनको नाउँमा ठूला दलहरूलाई आफ्नो इशारामा हिंडाए । नेमकिपाले विदेशीको भरमा होइन नेपाली जनताकै भरमा आन्दोलन उठाउनुपर्ने अडान राख्यो । ७ मंसिर २०६२ मा सात दल र माओवादीबीच १२ बुँदाको साझा सहमति भयो । त्यसपछि प्रतिगमनविरोधी आन्दोलनमा भारतको चलखेल बढ्यो । २४ चैत्रबाट जनआन्दोलनमा जनताको सहभागिता बढ्यो । उठ्दै गरेको जनआन्दोलन ११ वैशाख २०६३ को दिन राजाको सम्बोधनसँगै बीचैमा टुङ्गियो । नेमकिपाबाहेक ६ दलको सरकार गठन भयो । नेमकिपाले सरकारमा गएका मन्त्रीहरूले 'के- के काम गर्नुहुन्छ र के-के गर्नुहुँदैन भन्ने किटान गर्नुपर्ने अडान राख्यो । यसलाई बेवास्ता गर्दा ६ दलको सरकार भागबन्डामा सीमित भयो । विदेशीलाई नागरिकता दिने ऐन र खानेपानी निजीकरणको नाममा विदेशी कम्पनीलाई दिने ऐन पारित गरियो । यसको विरोधमा संसदमा नेमकिपा एक्लैले मतदान गर्‍यो ।

१ माघ २०६३ का दिन अन्तरिम संविधान जारी भयो र व्यवस्थापिका-संसद गठन भयो । १८ चैत्र २०६३ को दिन नेमकिपाबाहेक माओवादीसहितको सात दलको अन्तरिम सरकार गठन भयो । अन्तरिम सरकारको न्यूनतम कार्यक्रम र मन्त्रीहरूको आचारसंहिता तयार गरियो । सरकारमा बस्ने दलहरूबीच राजदूत, उपकुलपति, रजिष्टार, महाप्रबन्धक आदि पदको भागबन्डा गरियो । जनआन्दोलन दबाउनेहरूमाथि कारबाही गरिएन । रायमाझी आयोगको प्रतिवेदन कागजमा सीमित भयो । अपराधीहरू ठूलठूला पार्टीहरूबाटै संरक्षित भए । भ्रष्टाचार, अभाव, बेरोजगारी, लोडसेडिङ्ग, महङ्गी, आदि समस्यामा कुनै कमी आएन । राजाको प्रतिगामी सरकार र अन्तरिम सरकारबीचको कुनै तात्विक भिन्नता देखिएन । अन्तरिम संविधानमा बन्दोबस्त गरिएका निःशुल्क शिक्षा र स्वास्थ्य उपचार, रोजगारीको सुनिश्चितता, खाद्य सम्प्रभुता र सामाजिक सुरक्षाको प्रत्याभूतिजस्ता महत्वपूर्ण विषयहरू कार्यान्वयन गर्न कानुन बनाइएन । भूमिहीनहरूलाई जमिनको बन्दोबस्त र अशक्त एवं अपाङ्गहरूको बन्दोबस्ततर्फ अन्तरिम सरकारले ध्यान दिएन । गणतन्त्रको नारा दिने पार्टीहरूको अन्तरिम सरकारले निलम्बित राजाको लागि करोडौं बजेट व्यवस्था गर्‍यो । यसकारण नयाँ संविधानमा शासक पार्टीहरूबाट ठूलो आशा गर्ने ठाउँ छैन ।

सरकारमा बसेका दलहरूका नेताहरूको बरोबर भारत भ्रमण र भारतीय दूतावासमा वार्ता र राजनीतिक परामर्शले नेपालको आन्तरिक मामिलामा हस्तक्षेप र सार्वभौमिकतामाथि थिचोमिचो हुने काम भएको स्पष्ट छ । नेपालको सिमानामा भारतले एकतर्फी बनाएका बाँध र तटबन्धहरूले नेपालको हजारौं विघा भूमि जलमग्न भएको छ र हजारौं नेपालीको उठिवास भएको छ । तर सरकारमा बस्ने पार्टीहरू लाचार भएर भारतीय विस्तारवादीको अगाडि घुँडा टेक्दै गए । संघीय लोकतान्त्रिक गणतन्त्र भनिने पूँजीवादी गणतन्त्रले मानव जातिको समस्या समाधान गर्न सक्दैन । ६१ वर्षभन्दा पहिलेदेखि भारत, पाकिस्तान, बंगलादेश, श्रीलंका, आदि देशहरूमा लोकतान्त्रिक गणतन्त्र चालू छ । तर जनताका समस्याहरू समाधान भएका छैनन् । जनताका सबै समस्या समाधान गर्न समाजवादी गणतन्त्र नै आवश्यक छ । समाजवादी गणतन्त्र नै कामदार वर्गको प्रजातन्त्र हो ।

नेपाल मजदुर किसान पार्टी गुणविनाको संख्यामा विश्वास गर्दैन । त्यसैले नेमकिपा स्थापनाकालदेखि जो पायो त्यसलाई जम्मा गरेर भीड बनाउनुभन्दा असल, सच्चा, कर्मठ, संघर्षशील, त्यागी र अनुशासित कम्युनिष्टहरूद्वारा मात्र नेपालको कम्युनिष्ट आन्दोलनलाई आजुमा पुऱ्याउन सकिने सत्यमा अटल विश्वास गर्दछ । तसर्थ प्रत्येक परिवर्तनवादी कम्युनिष्टले आ-आफ्नो क्षेत्रबाट नेपाल कम्युनिष्ट आन्दोलनमा घुसेका र घुस्न खोज्नेहरूलाई सैद्धान्तिक र वैचारिक अथक संघर्षद्वारा पराजित गर्दै आन्दोलनलाई अगाडि बढाउनु उसको परम् कर्तव्य र समयको माग हो । समाप्त ।

मजदुर आवाज

# स्वदेशी छाला जुत्तालाई प्रोत्सहित गर्नु पर्दछ



– सानु रोका

बर्षले आधा शताब्दी ५१ बर्ष पुगेको सानु रोका आफ्नो बाजे र बुबाको कामलाई अहिले पनि निरन्तरता दिइरहेको छ ।

स्वदेशी छाला उत्पादन गरी स्वदेशी छाला जुत्ता बनाउन प्रोत्साहित गर्न सकेमा नेपालको पैसा विदेश जाने छैन । नेपाली छाला अन्तर्राष्ट्रिय गुणस्तरको भन्दा कम छैन ।

कीर्तिपुर नपा वडा नं. १२ जाखामा वुवा दलवहादुर रोका र आमा काली रोकाको माहिला छोराको रुपमा वि.सं. २०१८ सालमा जन्मनु भएका सानु रोका विद्यालयको शिक्षा पुरा नहुन्दै काम गर्नुभयो ।

चिनिया सरकारको सहयोगमा निर्माण भएको वाँसवारी छाला जुत्ता कारखानामा कालिगदको रुपमा प्रवेश गर्नुहुने रोका सिन्को मोलमा नीजिकरण गरी विक्री भएपछि वाँसवारी छाला जुत्ता बन्द भयो ।

बन्द लगत्तै शुभकामना शु सेन्टरमा काम गरेको सानु काम गर्ने वातावरण नमिलेपछि कीर्तिपुरमा आफैले जुत्ता मर्मत तथा नयाँ जुत्ता विक्रीको लागि शु सेन्टर खोल्नुभयो ।

कीनपा वडा नं ९ सुन्दरबजार धोकासीमा १० बर्षदेखि कीर्तिपुरवासी र कीर्तिपुर आइ वसोवासगरी रहनुभएका सवैको जुत्ता मर्मत गर्ने र अर्डर अनुसार नयाँ सिउने र रेडिमेड बेच्ने गर्दै आइरहनुभएको छ जवान रोकाले ।

एउटा शोरुम सहित मर्मत कोठा र अर्को गोडाम सहित काम गर्ने कोठा गरी २ वटा कोठाको मासिक ४६०० घर वहाल तिर्नु पर्दछ ।

तै पनि दैनिक २/४ जोर रेडिमेड जुत्ता र केही मर्मत गर्दा सालाखाला दैनिक ५०० कमाइन्छ होला भन्नुहुन्छ ।

२०४६ सालमा ज्ञानी रोकासंग विवाह बन्धनमा वाँधेका रोकाको तिन छोरी शोभा रोका, कृष्णशोभा र तारा रोका र छोरा एक लक्ष्मण रोका रहेका छन् । पहिलो र दोस्रो छोरीको विवाह भइसकेको र माइली छोरी तारा आर आर क्याम्पसमा ब्याचलर स्नातकमा अध्यनरत छीन भने छोरा लक्ष्मण कीर्तिपुरस्थित सहिद स्मारक कलेजमा अध्ययन गरेका छन् ।

पेशाबाट कति सन्तुष्ट छ भनी सोध्दा सन्तुष्ट भएको वताउनुहुन्छ तर कच्चापदार्थको भाउ वृद्धिले समयमै सामान पाउँदैन भन्नुहुन्छ । आवश्यक मात्रामा स्टक राख्न नसकेपछि मेला र स्टलमा हामी जस्तो सानो ब्यावसायीको लागि ठाउँ उपलब्ध नभएको गुनासो गर्छन रोका ।



एक जना श्रमिक मजदुरले देशको अवस्थालाई कसरी हेर्नुहुन्छ भन्दा देश डावाडोल अवस्थामा रहेकोले दुःख मान्नुहुन्छ । कसैले पनि देशमा सुशासन दिन सकेन । वहुदलीय प्रजातन्त्र, लोकतन्त्र, गणतन्त्रसम्मको परिवर्तन आउँदा पनि शासकहरुले गर्दा काम त केही भएन, गरेन नेपाली जनताले परविर्तनको अनुभुति गर्न पाइरहेको छैन । सत्तामा नपुगेसम्म जनताको कुरा गर्ने सत्तामा पुगेपछि विर्सने र आफ्नै भुडीमात्र भर्ने परम्परालाई नेपाली जनताले विस्तारै बुझ्दै आएको छ ।

***(पत्रिकाका सम्पादक नारायण महर्जनसँग गरेको कुराकानीमा आधारित केही अंश ।)***

# सहिदको परिभाषामा अझै अन्योल

काठमाडौ । प्रत्येक वर्ष माघको दोस्रो साता देशमा सहिदको चर्चा हुने गर्दछ, सहिद सप्ताहको सन्दर्भमा । तर देश र जनताका लागि जीवन उत्सर्ग गर्ने वास्तविक सहिदका सपना साकार पार्नेतर्फ कुनै ठोस पहल नभएको र सहिदको सर्वमान्य परिभाषा पनि अझसम्म बन्न नसकेकोमा भने जनता खिन्न रहेका पाइन्छन् ।

सहिदको परिभाषा निर्धारण गर्न बनेको समितिका संयोजक मोदनाथ प्रश्रितले सहिदले गरेको जीवनको त्यागले गर्दा आज नागरिकले स्वतन्त्र रूपमा जीवन यापन गर्न पाएको स्वीकार्दै सहिद घोषणा गर्नका लागि विशेष मापदण्ड तयार गरी सरकारलाई प्रतिवेदन बुझाएको भए पनि कार्यान्वयन नभएकोमा दुःख व्यक्त गर्नुभयो ।

उहाँले भन्नुभयो- 'पछिल्लो समयमा राजनीतिक तथा गैरराजनीतिक कारणले मृत्युवरण गरेका मानिसलाई विभिन्न समूहको दबाबबाट राज्यले सहिद घोषणा गर्ने परिपाटीले सहिदको अवमूल्यन भएको बताउनुभयो ।

प्रत्येक वर्ष माघ ११ देखि १६ गतेसम्म स्थानीय स्तरमा मनाइने सहिद सप्ताह यस वर्ष पनि काठमाडौं महानगरपालिकाले कार्यकारी अधिकृत केदारबहादुर अधिकारीको संयोजकत्वमा सहिद सप्ताह मूल समारोह समिति गठन गरी मनाइरहेको छ । सो सप्ताहअन्तर्गत विशेषगरी चार सहिदले राणा शासनविरुद्धको सङ्घर्षमा जीवनको बलिदान गरेको मिति पारेर श्रद्धाञ्जली दिने गरिन्छ ।

धर्मभक्त माथेमाकी छोरी रेणुदेवी श्रेष्ठले राजनीतिक दलहरूले वास्तविक सहिदको सपना पूरा गर्नका लागि प्रजातन्त्र र लोकतान्त्रिक गणतन्त्रको सदुपयोग गरेर विधिको शासन कायम गरी जनतालाई सामाजिक परिवर्तनको अनुभव गराउनुपर्ने उल्लेख गर्नुभयो ।

सहिदका रूपमा दसकौं अघिदेखि नेपाली जनमानसमा स्थापित चार सहिद शुक्रराज, धर्मभक्त, दशरथ चन्द र गङ्गालालले सहादत प्राप्त गरेका मितिका आधारमा नेपालमा सहिद दिवस मनाउने गरिएको हो । यी चार सहिदलाई विसं १९९७ को माघ ११ देखि १५ सम्ममा अमरत्व (सहादत) प्राप्त भएको थियो । तत्कालीन प्रधानमन्त्री जुद्धशम्शेरसँग माफी मागेका भए जीवन बच्ने अवस्था हुँदाहुँदै पनि उनीहरूले माफी नमागी जीवन उत्सर्ग गरेर निरङ्कुश राणाशाहीलाई कडा चुनौती दिएका थिए । त्यसैले उनीहरूको तुलना अरु सहिदहरूसँग हुन नसक्ने बताइन्छ ।

सहिद सप्ताह मूल समारोह समितिका संयोजक केदारबहादुर अधिकारीले सहिद सप्ताह कहिलेदेखि मनाउन थालिएको हो त्यसको अभिलेख स्थानीय निकायमा पनि नभएकोले त्यसको खोजी भइरहेको उल्लेख गर्नुभयो । यद्यपि विसं २०१८ सालदेखि सहिद दिवस मनाउन थालिएको अनुमान गरिन्छ ।

मुलुकमा विभिन्न समयमा भएका राजनीतिक परिवर्तनको क्रममा मृत्युवरण गरी सहिद बनेकाका परिवार आफन्तजनको पीडालाई राज्यबाट के कस्तो सहयोग गरिएको हो त्यसको पनि आधिकारिक तथ्याङ्क गृह मन्त्रालयमा अभिलेख हुनसकेको छैन् ।

सो मन्त्रालयमा विसं २०१७ देखि २०४६ को क्रममा सहिद भएकाको अभिलेख छैन र दोस्रो जनआन्दोलनपछि १११ जना सहिदको नाम वेवसाइटमा राखिएको छ। पछिल्लो समयमा भने धार्मिक, निजामती, शिक्षक, वित्तीय संस्था, सशस्त्र प्रहरी, तराई मधेस, संस्थान, स्थानीय निकाय, लिम्वुवान आदि क्षेत्रगत शीर्षकमा सहिद घोषणा गर्ने गरिएको छ ।

राजनीतिज्ञ तथा साहित्यकार दीर्घराज प्रसाईंले मुलुकमा प्रजातन्त्र स्थापनाका लागि गरेको योगदानको अहिले अवमूल्यन भएको टिप्पणी गर्दै उनीहरूले देशमा जुनसुकै तन्त्रको व्यवस्था आए पनि देश विकास र परिवर्तनका लागि सकारात्मक काम हुन नसकेको भन्दै स्वतन्त्र र समृद्ध मुलुक निर्माणका लागि सहिदले देखाएको बाटोलाई अङ्गीकार गर्नुपर्नेमा जोड दिनुभयो ।

चार सहिदको सम्झनामा विसं २०१८ मा सहिदगेट निर्माण गरी उनीहरूको सालिक स्थापना गरिएको थियो । वरिष्ठ इन्जीनियर शङ्करनाथ रिमालले सहिदगेटको संरचना तयार गर्नुभएको हो ।

## श्रीश्रीश्री बाघभैरव मूर्ति जिर्णोद्वार कार्यको लागि रू. १०००।- वा सो भन्दा बढी रकम हालसम्म सहयोग गर्नेहरूको आठौं नामावली

| नाम र ठेगाना | रकम | नाम र ठेगाना | रकम |
|---|---|---|---|
| १) अमरकाजी श्रेष्ठ नयाबजार कीर्तिपुर ३ | २५,५२५/- | ४६) गोविन्द्रबहादुर प्रधान ट्याङगलाफाट कीनपा ३ | ५००५/- |
| २) नेपाल निर्माण ब्यवसायी संघ नयाँबजार | १७२५०/- | ४७)दुर्कमान, मायादेवी महर्जन, पाँगा कीनपा १२ | ५००१/- |
| ३) अशोक, गुलाफनानी महर्जन,नगाउ-१६ | १५६७८/- | ४८)ओम हिमालयन ईटा भट्टा उद्योग प्रा.लि थानकोट | ५००१/- |
| ४) स्व. राममाया महर्जन, ढल्पा,कीनपा ५ | ११११११/- | ४९)अनिस साही, पाघु टोल, कीर्तिपुर | ५००१/- |
| ५) सिभिल बैंक लि, कीर्तिपुर शाखा | ११०००/- | ५०)मुना राई, इटहरी | ५००१/- |
| ६)स्व.जुद्ध सिंह गुठी परिवा, येलखा, धोकसिला, भेलुङ | १०२९१/- | ५१)चौधरी ग्रुप सानेपा ललितपुर | ५००१/- |
| ७) विश्वमोहन श्रेष्ठ, बाहिरीगाउँ,नयाजार | १०१११/- | ५२)गा.नागेन श्रेष्ठ, रचना श्रेष्ठ,सामाखु,कमनपा२९ | ५००१/- |
| ८) नवमी गुठी समल, कीर्तिपुर | १००००/- | ५३)पुनमाया महर्जन, कोछें, कीर्तिपुर ६ | ५०००/- |
| ९) जमूना महर्जन, लण्डन, यु.के | ९०००/- | ५४)मिश्री महर्जन, इटाछें कीनपा ३ | ५०००/- |
| १०) बिनोद महर्जन लण्डन, यु.के | ८७५०/- | ५५)कृष्णहरी महर्जन, नयाँबजार कीनपा १७ | ५०००/- |
| ११) विद्यान महर्जन , गल्छे | ७०००/- | ५६)इन्द्रायणी श्रेष्ठ गुठी, कीर्तिपुर | ३०००/- |
| १२)इश्वरलाल महर्जन, लाछी, पाँगा | ७०००/- | ५७)चौधरी ग्रुप, सि.जी, फिनको, सानेपा | ३०००/- |
| १३)गंगाधर, पाउसरघर बज्राचार्य, बुबहाल, ललितपुर | ६६६६/- | ५८)हरिराज आचार्य, कीनपा १ | २५२५/- |
| १४)पन्नालाल, हिरामुती महर्जन, गल्छें | ६५५७/- | ५९)हेरादेवी महर्जन, बाहिरीगाउँ | २०१०/- |
| १५)इन्द्रायणी गुठी, बाहिरीगाउँ, कीर्तिपुर | ६०००/- | ६०)विरमाया महर्जन नयाँबजार | २००५/- |
| १६)संगिता महर्जन, लण्डन, यु.के | ६०००/- | ६१)रोजन महर्जन, चाफल | २०००/- |
| १७)रिपु महर्जन, लण्डन, यु.के | ६०००/- | ६२)बाबुराजा महर्जन, ओकुबहाल, ललितपुर | २०००/- |
| १८)विन्दुर महर्जन, लण्डन, यु.के | ६०००/- | ६३)चौधरी ग्रुप सि.जी, फुडस, सानेपा | २०००/- |
| १९)गंगा महर्जन, लण्डन, यु.के | ५७४४/- | ६४)रामभोला , शोभा महर्जन, पाँगा | ११११/-- |
| २०)गुत्पौं भवन गुठी, गुत्पौं | ५५५५।५५ | ६५)अशोक श्रेष्ठ, नयाँबजार ,कीनपा १७ | ११०२/- |
| २१)स्व.ठाकुरदास, चन्द्रमाया नापित | | ६६)बासुदेव नेवा:, नगाउँ | ११०१/- |
| पुत्र पुष्पदास नापित, सत्तको, कनपा १ | ५५५५।५५ | ६७)महेन्द्र महर्जन, नगाउँ कीनपा १६ | ११००/- |
| २२) गुत्पौं गुठी, कीर्तिपुर | ५५५५/- | ६८)त्रिलोक श्रेष्ठ, नयाँबजार, कीनपा १७ | १०१६/- |
| २३)रविन्द्रमान महर्जन, नयाँबजार, कीनपा ३ | ५५५५/- | ६९)बुद्धलक्ष्मी शाक्य, स्वयम्भु | १०१०/- |
| २४) स्वर्णलक्ष्मी सेभिङ एण्ड क्रेडिट | | ७०)विष्णुकुमार प्रधान, देपुखुसिं, कीनपा १ | १०१०/- |
| कोअपरेटिभ लि , कालिमाटी | ५५५५/- | ७१)जीवन महर्जन, पाँगा कीनपा १० | १०१०/- |
| २५)सुनौलो कीर्तिपुर बचत तथा | | ७२)नीरञ्जन काफ्ले धुम्वाराही | १००५/- |
| ऋण सहकारी संस्था लि | ५५५५/- | ७३)ओम हिमालयन सप्लायर्स, कीर्तिपुर | १००१/- |
| २६)लोकलाल महर्जन, | | ७४)प्रज्ञा महर्जन, पाँगा, कीनपा १० | १००१/- |
| उषा राजभण्डारी (महर्जन) नयाँबजार -१७ | ५ ५ ५ ५ । | ७५)स्व.मंगल मुणी बज्राचार्य, नयाँबजार, कीनपा १७ | १०००/- |
| २७)शुलभ, शुभाना, भाजंगल कीनपा १८ | ५५५०/- | ७६)सानुभाई मानन्धर, कुटुसाल | १०००/- |
| २८)बद्रीमान नकर्मी, बाहिरीगाउँ, कीनपा १७ | ५५०१/- | ७७)नीर बस्त्रालय, नयाँबजार कीनपा १७ | १०००/- |
| २९)नाति महर्जन, भन्यापुखुसी, कीर्तिपुर | ५५००/- | ७८)बिमला महर्जन, क्वयना, कीर्तिपुर | १०००/- |
| ३०)ज्ञान बहादुर महर्जन, थाम्बहाल | ५५००/- | ७९)कृष्ण श्रेष्ठ, नयाबजार, कीनपा १७ | १०००/- |
| ३१)गणेश, इश्वरी तण्डुकार, कुटुभ्फोल | ५३०९/- | ८०)शुभ सेवा बचत, पाँगा | ५०००/- |
| ३२)जेतिमान, बिन्दिया प्रधान, लायकु कीनपा १ | ५२८०/- | ८१)श्यामकृष्ण श्रेष्ठ, कीर्तिपुर | ५१०५/- |
| ३३)तुल्सी देगः बचत तथा ऋण कोष, कीनपा २ | ५१११/- | ८२)देबलक्ष्मी महर्जन, नयाँबजार | ५०००/- |
| ३४)प्रकाश विद्यालक्ष्मी महर्जन, कीनपा १० | ५१०५/- | ८३)लक्ष्मीशोभा डंगोल प्रधान, दोलखा | ५००५/- |
| ३५)स्व.केशव बहादुर, हरिमाया प्रधान, कीनपा १ | ५१०१/- | ८४)विश्वलक्ष्मी डंगोल, कीर्तिपुर | ५००५/- |
| ३६)रुपा महर्ज हेखाली पाँगा कीनपा ९ | ५१००/- | ८५)गंगा डंगोल, कीर्तिपुर | ५००५/- |
| ३७)रक्षा गुठी, कीर्तिपुर | ५१००/- | ८६)जमूना महर्जन, पाँगा कीर्तिपुर | ५००५/- |
| ३८)अमित कुलु, कालधारा, काठमाडौं | ५१००/- | ८७)पूर्णिमा डंगोल प्रधान, भक्तपुर | ५००५/- |
| ३९)कीर्तिपुर हिल साईड, चिठू, कीनपा ३ | ५०११/- | ८८)रचना डंगोल नयाँबजार, कीर्तिपुर | ५००५/- |
| ४०)सिद्धाश्रम शक्ति केन्द्र आरति संचालन केन्द्र कीर्तिपुर | ५०१०/- | ८९)शंकर डंगोल नयाँबजार, कीर्तिपुर | ५००५/- |
| ४१)श्रृष्टि महर्जन, ढल्पा, कीनपा ५ | ५०१०/- | ९०)शम्भु डंगोल नयाँबजार, कीर्तिपुर | ५००५/- |
| ४२)कृष्ण बहादुर महर्जन, भुतखेल, चोभार | ५००५/- | | |
| ४३)स्व.मंगलमुणि,हिरादेवी बज्राचार्य,नयाँबजर | ५००५/-- | | |
| ४४)स.प्रंनि.समेनन्द बज्रचार्य, तजाफा कीनपा ४ | ५००५/- | | |
| ४५)प्रमोद महर्जन, सहिदपथ, पाँगा कीनपा ११ | ५००५/- | | |

रू.५०००।- वा सो भन्दा बढी सहयोग गर्नेहरूको नामावली ताम्रपत्रमा पनि लेखी बाघभैरव मन्दिरमा टाँस गरिनेछ । समय धेरै छैन । छिट्टै सहयोग गरी नाम लेखाउन हुन अनुरोध गर्दछौं ।

**बाघभैरव मूर्ति जिर्णोद्वार समिति, कीर्तिपुर**

अन्तरवार्ता :

# मरेपछि श्राद्ध गर्नु भन्दा बाचुञ्जेल श्रद्धा गरौं

– दिलशोभा श्रेष्ठ



आमा : जो आफ्नो बच्चालाई आफू भन्दा बढि माया, स्नेह दिई हुर्काउछिन, बढाउँछिन । सानो होस् या ठूलो गल्तीलाई आमाले माफी दिन्छिन, तर त्यही बच्चाले आमाको एउटा सानो गल्तीलाई पनि तिलको पहाड बनाउँछ । बुढेसकालको साहारा सोचेकी त्यही बच्चाले घरबाट बाहिष्कार गरेको हामीले यो समाजमा छर्लङगै देख्न सक्छौ. । यस्तै दुःखमा परेका आमा र घरवारविहीनहरुको उद्धार गर्ने संस्था हो "आमाको घर" । अहिलेको यो २१ औं शताब्दीमा आएर पनि यस्ता संस्थाहरु खोलेर बसेका ब्यक्तिहरु थुप्रै छन् । आफूले छोरा दिन नसकेर श्रीमानले आफुलाई छोडेर गएको दुःख घर अरु कसैले कुनै हालतमा दुःख भोग्न नपरोस् भनेर रविभवनमा अवस्थित यस संस्थाका अध्यक्ष दिलशोभा श्रेष्ठ पनि यस समाजका उदाहरणमा गनिन्छीन् । एउटी छोरीको आमा दिलशोभाले दिन दुःखीहरुको उद्धारका लागि २०५४ सालमा खोलेको यो संस्थामा वृद्धाहरु ५० र बच्चाहरु ६० गरी जम्मा ११० रहेको उनले बताइन् । यसैबीचमा दिलशोभासँग हाम्रा सहयोगी जेनी महर्जनले गरेको अन्तरक्रिया प्रस्तुत छ । -स.

१) **तपाईले समाजसेवा गर्ने प्रोत्साहन कहाा र को बाट पाउनुभयो ?**

मैले मेरो बावाबाट पाइकी हुँ मैले छोरा दिन नसकेर श्रीमानले छोडेर गयो । लभ म्यारिज गरेर विहे भएतापनि मैले श्रीमानको माया पाउन सकिन । आफ्नो मनको विछोडका दुःख एकदम असहनीय हुन्छ, सोहि कारण बाबाले मलाई सेवा गर्ने प्रोत्साहन दिनुभयो ।

२) **सामाजिक कार्यहरु धेरै छन् । किन यहि नै रोज्नुभयो ?**

म चाहन्छु कोही पनि अनाथ नहोस्, बाटोमा कोही मागेर नबसोस् र कोही पनि बाटोमा सुत्न नपरोस् । वाचुन्जेल पाल्ने माया दिने यही हेतुले मैले यहि रोजेकी हुँ ।

३) **संस्थालाई कसरी अगाडि बढाउनु भएको छ ?**

संस्थाको कुरा गर्ने हो भने सुरुमा मलाई धेरै गाह्रो भयो तर आजभोलि सबैको सहयोगबाट यो संस्था अगाडि बढिरहेको छ र पछि पनि बढिरहने आशा छ । हेर्दै जाउँ के हुन्छ ।

४) **पछिल्लो समयमा तपाईलाई सहयोग गर्नेहरु धेरै आएको छ । कस्तो लाग्छ ?**

राम्रो लाग्छ नि । पहिला खाना खानै धौधौ थियो । खाना खान नपाएर बच्चा बृद्धालाई दालमोट र चिउरा खुवाएर राखेका थिए, त्यो पनि पेटभरि कहाँ पाउनु । तर आजाभोलि तात्तातो खाना दिन पाउँदा मलाई एकदमै आनन्द र खुशी लाग्छ ।

५) **तपाईले यो संस्थाको लागि सरकारबाट कस्तो अपेक्षा गर्नुभएको छ ?**

सरकारलाई नै पुगेका छैन मैले सरकारबाट के अपेक्षा गर्ने । हामीले कुनै काम गर्दा अरुको आशा कहिल्यै गर्नु हुँदैन । हामीले अरुलाई के दिन सक्यौ र जसमा आफूले आशा गर्न । मैले कुनै फलको आशा गरेर काम गरेकी हैन । आफै केही गरौ भन्ने भावले अगाडि बढेकी हुँ । जहाँसम्म सरकारको कुरा छ, सरकारले यस संस्थामा आवद्ध सवैलाई नागरिकता दिन्छु भनेर आश्वासन दिनुभएको छ । त्यो चाँडै पूरा होस् त्यो नै हाम्रो लागि ठूलो कुरा हो् ।

६) **अन्तमा तपाई के भन्नुहुन्छ ?**

आफ्नो आमाबुबालाई माया गर्नुपर्छ । मन भयो भने केही गर्न गाह्रो छैन् । मरे पछि श्राद्ध गर्नु भन्दा बाचुञ्जेल श्रद्धा गरौं ।

# साहित्य
## कविता

– अर्जुन नेपाःमी

# सास्नाया सःलय् सास्ताया म्ये

उखे स्वः थुखे स्वः
स्वः स्वः थाय् हे
गुण्डा व माफियातय् राज
सरकार हे दुगु खःला मखुला थें
थ्व ई थौंया बर्तमान,
खखँहे स्वःस्वँहे
इकुया वः हःहःपं

रितु रुपी दल दुनेया सरकार
दल खः बाय्
दलदल खः
थौं ध्वाथुइकेत थाकुया बिल ।

नवःगु बागमति नस्वाकेत
डलर वइच्वंगु दु
गुलिखे गुलिखे अल्याख हे
अय्न भ्वय् जुया : च्वन
फगत् माफिया व दलालतय्

भ्रष्टाचारया वंगल सिमा
थुलित क्वातुक धःस्वात कि
उकिं हे देश ह्वये मफय्क तेलाःतल
भ्रष्टाचार न्हंकेगु अभियानं
क्वपाले मफया भ्रष्टाचार
झन् ह्वया च्वंगु यथार्थय्
मिखा तिसिइ मायेक ब्वलंगु लकस,
व्हे लकसय् ग्वानाः ग्वानाः च्यानाः
कुँ गया : च्वंगु सरकारी निकाय
सुथां लाःगु मदुनि,
बिथां बिथां
थौंया कन्हय्,
कन्ह्य्या कंस,
गुंया राजमार्ग थें
चाःमाः तू तप्यंगु मदुनि ।

सकलसिगु भिं जुइमा धकाः
मनसुवाः मदुपिनिगु ल्हातय्
शासन सत्ता लानाः
नयेमालिगु कसाःया सास्ना
थुइ धुंकल जनतां
तर छता खँ
थ्व पाखेंया मुक्तिया लँपु
तिनाः च्वंगु मदु जनतां

बरु तिइत कुतः याना
हानं सदियौं तक शासन सत्ता
थःपिनिगु पालितःलय् न्हयाकेगु
म्हंसया म्ह्गस खँका च्वंपि
राहु जुया मंदः कयाः च्वनतिनि,

संघियता व संविधानया खँय
गुब्लें बालुवातार
गुब्लें सिंहदरवार
गुब्लें ४चारे
गुब्लें ५ तारे होटेल दुने
सहलह ब्याके ज्याः यानाः
च्वंपिनिगु नुगलय्
धात्थें देश व जनताया
माया मदुगु खःला ?
बाय् मेचया मोह व्
सत्ताया मतिना................
थौं छयातां ह्वातां जुई धुंकल ।

स्वीजरलैण्डण म्हंस क्वः ब्यूब्यूं
त्यानु मचापिं
न्युर्योक, लण्डन, पेरिस
दिल्ली, बेजिङ, तःक्वः तःक्व मछि
चाहुला नं लुमधंपिं

थःत देशया थुवाः धाय्त
छाती तःफाः याय्त लिमचिलिपिं
ह्यूपाःया गणतन्त्रय् संघियता...............
इमिगु नितिं न ल्त्वये न घुतुके जुया
कथुइ थानाः बिल ।

फोहोरी कासा म्हितेत
छतिं हे लज्जा मचापिन्स
संघियतायात रण्डीया छुमा वियेगु
कुतः यायेत छु बेर

अहो,
याये मजिल आः अबेर
सुंक च्वने मजिल
जुरुं जुरुं दने त्यल आः सबेर

ह्युपाःया लँपुई क्रान्तिका जः तंगु मदुनि
फगत् हाकुगु सुपाचं त्वःपुइगु
कुतः याःगु खः बैरीं
ह्युपाःया मार्गय् पंगः थं वःगु खः बैरीं
वहे मार्गया लँजुवाःमि जि अले छ

जितः सास्ना बियाः क्वः थलेगु जाः बैरीया
जि पाखें छन्त तापाका फायेगु कुज्याः बैरीया
चू चू यायेत दने जि ।

जिगु स्याः छंगु नं स्याः खः लँजुवाःमि
उकिं वाः छंगु व जिगु स्याःया लसय्
परेडया बाजं थायेवाः
सास्नाया सःलय्
सास्ताया म्यें हालेवा :
क्वचाल

# विद्यालयमा ५ विषयमा व्यावसाहिक शिक्षा

नेपाल सरकार शिक्षा मन्त्रालयले अब प्रत्येक जिल्लामा कम्तीमा एक वटा हुने गरी १०० विद्यालयमा कक्षा ९ देखि व्यावसायिक विषयको अध्ययन गराउने भएका छन् । इलोक्ट्रिकल, कृषि, पशुविज्ञान, कम्प्युटर र सूचना प्रविधिका ५ विषयमा ब्यावसायिक शिक्षा दिइ विद्यालयस्तरबाट प्राविधिक दक्ष नागरिक तयार पार्ने सो कार्य गराउन लागेको हो ।

सोमवार सूचना विभागद्वारा आयोजित सूचना तथा संचार मन्त्रालयको सभा कक्षमा भएको प्रवक्ता र पत्रकार भेटघाट कार्यक्रममा शिक्षा मन्त्रालयका प्रवक्ता महाश्रम शर्माले सो कुराको जानकारी गराउन भएको हो ।

आगामी शैक्षिक शत्रबाट परीक्षण कालको रुपमा संचालन गरी पछि सवै जिल्लाका विद्यालयमा त्यहाँको भौतिक अवस्था हेरी अध्यापनको क्षेत्र बढाइन सक्ने पनि बताउनुभयो । जिल्ला जिल्लाको निवेदन दिने कार्य पुरा गरी अध्ययन भैरहेको पनि वहाँले बताउनुभयो ।

# वीरगन्ज उपमनपामा एउटै व्यक्तिको नाममा २ अर्व पेश्की

वीरगन्ज उपमहानगरपालिकामा एउटै कर्मचारीको नाममा १ अर्व ९४ करोड पेश्कि रहेको छ । उपमहानगरपालिका गठनसँगै अरवौ रुपैया पेश्कि रहेकोले स्थानीयबाट फछ्यौट काम गर्न नसकेपछि संघीय मामिला तथा स्थानीय विकास मन्त्रालयबाट सिधा पेश्कि फछ्र्यौट गर्न निर्देशन दिएका छन् ।

कर्मचारी उमेशप्रसाद यादवले पटक पटक गरी १ अर्व ९४ करोड पेश्कि फछ्र्यौट गर्न वाँकी रहेको मन्त्रालयका प्रवक्ता दिनेशकुमार थपलिया बताउनुभएको हो । प्रवक्ता पत्रका भेटघाटमा वहाँले वीरगञ्ज उपमहा नपामा दरवन्दी विपरित करार, ज्यालादारीमा नियुक्त २३ जना कर्मचारीलाई पनि हटाइएको जानकारी दिनुभयो ।

# नेपाः पार्टीका केशवमान शाक्य पुनः अध्यक्षमा निर्वाचित

नेपाः राष्ट्रिय पार्टीको प्रथम महाधिवेशन काठमाडौंमा सम्पन्न भयो । सो अधिवेशनमा पुनः डा. केशमान शाक्य अध्यक्षमा निर्विरोध निर्वाचित गरेका छन् । ज्यापु प्रज्ञाभवन ललितपुरमा माघ १३ र १४ गते सम्पन्न भएको बन्दसत्रमा ४७ सदस्यीय नयाँ केन्द्रीय समिति निर्विरोध निर्वाचित गरेका छन् । सोहि सम्मेलबाट १२ बुँदे राष्ट्रिय प्रस्ताव पनि पारित गरेको छ ।

माघ १२ गते बसन्तपुर डवलीमा पार्टीका अध्यक्ष डा. केशवमान शाक्यले सो अधिवेशनको उद्घाटन गर्नुभएको थियो । उद्घाटन कार्यक्रममा विभिन्न दलका नेताहरुद्धारा सम्बोधन गर्नुभएको थियो ।

# सहिद स्मारक रक्तदान सम्पन्न

कीर्तिपुर । सहिद स्मारक कलेजमा स्थापित युथ रेडक्रस सर्कलले माघ १३ गते शनिवार कलेजकै प्राङ्गणमा रक्तादान कार्यक्रम गरियो । कलेजका प्रिन्सिपल मिलनमान महर्जनले रक्तसंकलन पोका हस्तान्तरण गरी उद्घाटन गरिएको सो कार्यक्रममा महिला ९१ पुरुष ४९ गरी ५८ जना रक्तदाताले रक्तादान गरेको आयोजकले जनाएको छ ।

# इसास सहिद श्रद्धाञ्जली सभा सम्पन्न

इन्द्रायणी साँस्कृतिक समाजको रजत बर्ष (२५) को अवसरमा सहिद दिवस २०६९ मा सहिद श्रद्धाञ्जली सभा कीर्तिपुरमा माघ १६ गते सम्पन्न भयो ।

प्रा. माणिकलाल श्रेष्ठको प्रमुख आतिथ्यमा भएको सो सभामा वहाँले राणाशासन विरुद्ध जीवन आहुति दिनुहुने वीर सहिदहरुको सम्मान जति गरे पनि नपुग्ने भन्नुभयो । राणाशासन अन्त्य गर्न ती चार सहिदले गोली खाएर र फाँसीमा झुण्डीएर राणशासनको अन्त्य भयो, ०४६ सालमा पंचायती व्यवस्था अन्त्य भयो भने ०६३ सालको जन आन्दोलनबाट राजतन्त्र नै अन्त्य भयो । तै पनि अमर सहिदहरुको इच्छा आकांक्षा पुरा भएको छैन । नेपाली जनताले परिवर्तनको अनुभुति गर्न पाइरहेको छैन । सत्तामा पुगेकाले मरेका सहिदहरुको त के जीउँदा नेपालीहरको हित गर्न सक्नुपर्दथ्यो भन्नुभयो ।

इसासका अध्यक्ष वीर प्रसाद भन्सारीको सभापतित्वमा भएको सो कार्यक्रममा इसासका दिलीप महर्जन, कवि राजभाई जकःमी, अर्जुन नेपाःमी, रामभक्त महर्जनद्वारा सहिदप्रति समर्पित कविता प्रस्तुत गरेको थियो भने इसासले सहिप्रति समर्पित गीत प्रस्तुत गर्नुभएको थियो ।

कार्यक्रममा अशोक भन्सारीले पनि बोल्नुभएको थियो ।

## पर्यटन विकास..........



**सगरमाथा आरोही सन्तकुमार महर्जनलाई मानार्थ सदस्यता प्रमाण पत्र प्रदान गर्दै**

पद्यात्रामार्गको उद्घाटन र पद्यात्रा मंसिर २८, चम्पादेवी-कलेखानी पदयात्रा २०६९ पर्यटन सम्बन्धी आइडिया शेयरिङ (असार २७), प्लाष्टिक झोलामुक्त कीर्तिपुर अभियान भाद्र १५, प्रर्दशनी मेला भृकुतीमण्डमा प्रदर्शनीस्थलमा सहभागी भै कीर्तिपुरको प्रचार प्रसार (असार २७), मलमास मेला मच्छेगाउँको फ्लेक्स वोर्ड मार्फत प्रचार प्रसार( साउन २१) कार्यक्रम भएको प्रतिवेदनमा उल्लेख गरेका छ। प्रतिवेदनमा आगामी आ व २०७०/०७१ मा १८ वटा कार्य गर्ने योजना समेत पेश गरेको छ।

कार्यक्रममा समाजका सहकोषाध्यक्ष रविन्द्र वहादुर प्रधानले संस्थाको आर्थिक प्रतिवेदन प्रस्ततु गर्नुभयो। कार्यक्रममा कीर्तिपुर नगरपालिका प्रतिनिधि सानुवावु परियार, मच्छेगाउँ गाविसका सचिव चिन्तामणी शर्मा, त्रिविका प्रा रुद्र प्रसाद उपाध्याय, सगरमाथा आरोही जाङबु शेर्पा, सन्तकुमार महर्जन, समाजका सचिव सरेन्द्र केसी, विरेन्द्र शाक्य लगायतले वोल्नुभएको थियो। कार्यक्रममा विश्वको सर्वोच्च शिखर सगरमाथामा १० पटक सफल आरोहण गर्ने आरोही जाङबु शेर्पा र कीर्तिपुर क्षेत्रबाट पहिलो पटक सगरमाथाको सफल आरोहण गर्ने आरोही सन्तकुमार महर्जनलाई संस्थाको मानार्थ सदस्यता प्रदान गरेको थियो।

सो सभा समाजका अध्यक्ष वीजय कुमार डंगोलको सभापतित्वमा भएको थियो। स्मरणीय छ सो समाजको २०६८ फागुन १५ गते जिल्ला प्रशासन कार्यालयमा विधिवत दर्ता भई क्रियाशिल रहेका छ।

## कीर्तिपुर .........

समिति गठन गरेको छ।

भेलामा उपस्थित राजनैतिक दलका प्रतिनिधि, पूर्व जनप्रतिनिधि, वडावडाका बुद्धिजीवि, नागरिक समाजका अगुवाहरुले कीर्तिपुर नगरपालिका केन्द्र भागमा सबै वडाबासीलाई मान्य हुने ढंगले नयाँ भवन निर्माण गर्न दवाव दिनुपर्ने बताएका छन्। त्यसै गरी वडा-वडामा विनियोजित बजेट ५ लाख भन्दा बढाउनु पर्ने, नगरको आन्तरिक स्रोत बढाउन करको मूल्यवृद्धि नगरी करको दायरा बनाउनु पर्ने, नगरपालिकाको पर्ति जग्गा संरक्षण गर्न र नगरपालिकामा भैरहेको ढिलासुस्ती बन्द गर्न सरल र सुस्त सेवा दिन दवाव दिनुपर्ने छलफल भएको आयोजकले जनाएको छ। यी विविध विषयमा विस्तृत अध्ययन र छलफल गरी नगरपालिकामा ज्ञापन पत्र दिने भएको छ।

स्मरणीय छ, कीतिपुर नगरपालिकाको १८ औं नगरपरिषद्बाट आ.व २०७०/०७१ मा नगरपालिकाको आफनै कार्यालय भवन बनाउन ३ करोड बजेटको स्रोत नगर विकास कोषबाट उपलब्ध हुने सार्वजनिक गरेको थियो।

## सूचना..........

क्यानले मङ्गलबार पत्रकार सम्मेलन गरी सूचना तथा सञ्चार प्रविधिको क्षेत्रमा भएका नयाँ प्रविधिको प्रदर्शनका साथै सूचना प्रविधिसम्बन्धी बृहत् छलफल गर्ने जनाएको छ।

पत्रकार सम्मेलनमा दिइएको जानकारीअनुसार प्रदर्शनीको क्रममा विद्युतीय माध्यमबाट लोकतान्त्रिक प्रक्रियामा सहभागिता, इन्टरनेट र अभिव्यक्ति स्वतन्त्रता तथा सरकारी कामकाजमा पारदर्शिता, जवाफदेहिता र निष्पक्षताको प्रत्याभूतिमा सूचना प्रविधिको भूमिका विषयक अन्तरक्रियात्मक कार्यक्रम आयोजना गरिने छ।



## स्वास्थ्य टिप्स

# हात्तीपाइले(फाइलेरियो) रोग



**हात्तीपाइले रोग भेनेको के हो ?**

हात्ती पाइले (फाईलेरिया) रोग कुष्ठ रोग जस्तै मानिसलाई नराम्रो गरि शारिरीक रुपमा असक्त, असमर्थ तथा अपाङ्ग तुल्याउने सरुवा रोग हो। यो रोग एक प्रकारको मसिनो धागो आकारको परजिवीबाट संक्रमण भए पछि लाग्छ। क्युलेक्स जातको संक्रमित पोथी लामखुट्टेले स्वास्थ्य मानिसलाई तोकेर यी परजिवीहरु शरीरमा प्रवेश गरेपछि यो रोग लाग्छ। यस्तो परजिवी तीन प्रकारका हुन्छन्।

क) उचेरेरया बाँक्रोफ्टी : ९० प्रतिशत
ख) ब्रजिया मलायी: ५ प्रतिशत
गं ) ब्रुजिया टिमोरी : ५ प्रतिशत

नेपालमा हात्तीपाइले (फाईलेरिया) रोग उचेरेरिया बाक्रोफ्टीद्वारा मात्र लाग्ने गरेको पाइएको छ।

### २) हात्तीपाइले (फाईलेरिया) रोगको परजिवीको जीवन चक्र

हात्तीपाइले (फाईलेरिया) परजिवीहरुले आफ्नो जीवन चक्रको केही भाग मान्छे भित्र र केही भाग लामखुट्टे भित्र विताउँदछ।

### २.१) मान्छेमा हुने चक्रको भाग

क्यूलेक्स तथा अन्य जातको संक्रमित पोथी लामखुट्टे (फाईलेरिया) परजिवीबाट संक्रमित भएकाले मान्छेलाई टोक्दा यसका मुख र सुँढ (प्रोवोसिस) मा रहेको इन्फेक्टीभ् स्टेजको (लार्भा तेश्रो अवस्था) परजिवी मानिसको छाला भित्र प्रवेश हुँदै शरीरको लिम्फ नलीहरुमा पुग्दछ। यी लार्भा परजिवी सो ठाउँमा (लिम्फ नलीमा) विस्तारै जवानी अवस्थामा (उचेरेरिया बाक्रोफ्टी) विकसित हुन थाल्दछन र यिनीहरुको उपस्थितिले गर्दा पछि लिम्फ नलीहरुमा लिम्फ सञ्चालन कार्यमा अवरोध उत्पन्न हुने गर्दछ। यसैको कारणले सोगथाउँ वरीपरी सुनिएर आउने हुन्छ। यस्तो अवस्था शरीरको विभिन्न भागहरुमा हुन सक्ने भए तापनि अकसर खुट्टामा र यौनाङ्गमा बढी हुने गरेका देखिएको छ। समय वित्दै जाँदा खुट्टा हात्तीको पाइला जस्तै भएर जाने भएका कारणले नै हात्तीपाइले (फाईलेरिया) भनेर नामाकरण गरिएको हुनसक्छ। जवानी अवस्थाम पुगेको पोथी (उचेरेरिया बााक्रोफ्ती) परजिवीले अत्यन्तै सानो आकारका (०.३ मि.मी) बच्चाहरु (माइक्रोफाइलेरिया) पैदा गर्दछन्। यी बच्चाहरु दिउँसो मान्छेको रगत वग्ने ठूला नलीहरुमा वस्ने गर्दछ भने रात्रीको समयमा छाला मुनिका मसिना रगतनलीहरुमा गएर वस्ने गर्छन। यही कारणले गर्दा हात्तीपाइले (फाईलेरिया) रोगबाट संक्रमण भएका छ छैन सो को रोग निदान गर्न रगत जाँच गर्नकालगि रगत नमूना राती सुतेको समयमा रात्री १० बजे देखि विहान २ बजे भित्र को समय पारेर लिइन्छ।

पहिलो संक्रमण (लामखुट्टेको टोकाई) भएदेखि शरिरमा परजिवी जवानीभै भाले परिजिवीसँग संसर्ग पछि उत्पादन भएका बच्चाहरु (माइक्रोफाइलेरीया) ब्यक्तिको रगतमा देखिन कम्तिमा नौमहिना लाग्छ। परजिवीको आयु सालाखाला ४-६ बर्षको हुन्छ तर यिनीहरु १५ बर्ष सम्म पनि बाँच्न सक्छन्।

### २.२ लामखुट्टेमा हुने चक्रको भाग

हात्तीपाइले (फाईलेरिया) परजिवीद्वारा संक्रमित भएको मान्छेको शरीरमा खासगरी रात्रीको समयमा छालामुनी रहेका रगत नलीहरुमा बच्चाहरु (माइक्रोफाइलेरीया) आएर बस्ने हुँदा सो समय तिर क्यूलेक्स या अन्य जातका लामखुट्टेले टोक्ने मौका पायो भने चुसेको रगतसँगै ती माइक्रोफाइलेरीया पनि उक्त लामखुट्टेको पेटभित्र पुग्दछन र सो लामखुट्टे यस प्रकारले संक्रमित हुन पुग्छ। लामखुट्टेको पेटमा पुगेको माइक्रोफाइलेरीया तुरुन्त छातिका मासुमा गएर बस्ने गर्छन् जहाँ यिनीहरुको विकास विस्तारै भै लार्भा पहिलो , दोस्रो अनि तेश्रो अवस्थामा पुग्छन यो तेस्रो अवस्थाको लार्भा लाई संक्रमणकारी परजिवी (इन्फेकटीभ् स्टेज) भन्दछन्। यो इन्फेक्टीभ स्टेजको परिजिवीहरु लामखुट्टेको टाउको र सुँढ (प्रोवोसिस) मा गएर बस्छन र कुनै पनि बेलामा अर्को स्वास्थ मान्छेलाई यी संक्रमित लामखुट्टेले टोक्दा ती परजिवीहरु उक्त ब्यक्तिमा सर्ने हुन्छ र यसरी त्यो ब्यक्ति हात्तीपाइले (फाईलेरिया) परजिवीबाट संक्रमित हुन जान्छ। लामुखट्टेमा परजिवीको विकास हुन १-२ हप्ता लाग्दछ।

### हात्तीपाइले (फाईलेरिया) रोगको लक्षण तथा चिन्हहरु

- ♦ जाडो लागि ज्वरो आउनु र शरिरमा कम्पन हुनु,
- ♦ लिम्फ नलीहरु सुन्निनु, रातो भई दुख्नु, हात गोडामा नीलाकाला धर्साहरु देखिनु,
- ♦ गीर्खा आउनु दुख्नु,
- ♦ पुरुषमा अण्डकोष वरपरका नसाहरु फुल्नु/दुख्नु
- ♦ अण्डकोष ठूलो हुनु, दुख्नु गिर्खाहरु भेटिनु, पछि हाइड्रोसिल अथार्त अण्डकोष वरपरी पानी भेर ठूलो अकार हुनु
- ♦ महिलामा यौनाङ्ग अथवा स्तन सुन्निनु /दुख्नु
- ♦ खुट्टा सुनिएर हात्तीपाइले (फाईलेरिया) हुनु
- ♦ हात सुन्निनु
- ♦ पिसावमा दुध/दही जस्तो बाक्लो सेतो लेदो आउनु
- ♦ लामो समयसम्म सुख्खा खोकी लागिरहनु, दम बढ्नु, रगतमा इयोसिनोफलिया देखिनु।

### हात्तीपाइले (फाईलेरिया) रोगको परीक्षण

हात्तीपाइले (फाईलेरिया) रोग निम्न तरिकाहरुबाट पत्ता लगाउन सकिन्छ।

- ♦ रोगका लक्षण तथा चिन्हरुबाट
- ♦ ठीक समयमा लिएको रगत जाँच गरी परजिवी (माइक्रोफाईलेरीया) फेला पारेर
- ♦ हाइड्रोसिलबाट निकालेको झोल पदार्थ या पिसाव जाँच गरी परजिवी (माइक्रोफाईलेरीया ) पत्ता लगाएर
- ♦ सेरोलोजिकल तरीबाट (इम्यूनोकोमातोग्राफिक टेष्ट)

हात्तीपाइले (फाईलेरिया) रोग विश्वका ८३ मुलुकहरुमा पाइएको छ। यी देशहरुमा बसोवास गर्ने एक अर्व भन्दा बढी मानिसहरुलाई यो रोग लाग्न सक्ने संभावना छ। हाल १२ करोड मानिसहरु यो रोगबाट संक्रमित छन्। यस मध्ये १.५ करोड मानिसहरुमा हात्तीपाइले र २.५ करोडमा अण्डकोष तथा यौनाङ्ग सुन्निएको पाइएको छ।

त्यस्तै सन २००१ मा ३७ जिल्लाहरु र २००५ मा १३ जिल्लाहरुमा इम्मुनोक्रोमाटोग्राफिक इपिडिमियोलोजीकल म्यापिङग गरिएका अध्ययनबाट र एकिकृत स्वास्थ्य ब्यवस्थापन सूचना प्रणाली (HMIS) बाट प्राप्त तथ्याङकको आधारमा जम्मा ६० जिल्लाहरु यो रोगबाट प्रभावित भएको पाइएको छ। **(स्रोतः स्वास्थ्य सेवा विभाग इपिडेमियोलोजी तथा रोग नियन्त्रण महाशाखा ।)**

## हात्तिपाइले.........

आगामी २०६९ माघ २० गते शनिवारबाट २३ गते मंगलवार सम्म ४ दिने अभियानमा सवै २ वर्षमाथि देखिका नेपाली नागरिकहरुलाई अनिवार्य औषधी खुवाउन अनुरोध गर्नु भयो।

कार्यक्रममा जनस्वास्थ्य कार्यालय काठमाडौंका प्रमुख श्री कृष्ण भट्टले सन २०२० सम्ममा विश्ववाटै यो रोग निवारण गर्ने लक्ष्यकासाथ नेपालमा पनि २०६६ देखि यो रोगविरुद्ध अभियान संचालन भएको जानकारी दिनुभयो।

नेपालको ६१ जिल्लामा यो रोग जनस्वास्थ्य समस्याको रुपमा देखा परेको समयमा पत्रकारहरुमार्फत निर्वारणको लागि औषधी वितरणमा सहयोग पुऱ्याउन अनुरोध गर्नुभयो।

कार्यक्रममा पत्रकारहरुको जिज्ञासालाई प्रमुख भट्ट र जनस्वास्थ्य कार्यालयमा कार्यरत डा. विश्वराज खनालले प्रष्ट पार्नुभएको थियो।